## कसरी सुरु भयो स्वस्थानी कथा ? Orgin of swasthani katha

-प्रमोद बस्नेत



आजबाट श्रीस्वस्थानी ब्रतकथा सुरु भएको छ। पुष शुक्ल पूर्णिमादेखि माघ शुक्ल पूर्णिमा, एक महिनासम्म यो व्रत लिने गरिन्छ। यस व्रत विधिमा माधवनारायणको पूजा गरिन्छ भने नेपालीहरुले स्वस्थानीको व्रत कथा सुन्ने गर्दछन्।

यो स्वस्थानी कथा कहाँबाट उत्पत्ति भयो भन्ने कुरामा अझै पनि थुप्रै मत रहेका छन्। तर स्वस्थानी कथा भने नेपालमै उत्पत्ति भएकोमा दुई मत छैन। स्वस्थानीको उल्लेख अरु कुनै वेद पुराण तथा अन्य कुनै वैदीक साहित्यमा नभएका कारण यो यहीको स्थानीय कथाको रुपमा चिनिएको छ। सबैभन्दा पुरानो प्रती बि.स १६२९ को संस्कृत भाषाको स्वस्थानी भेटिएको छ। यद्यपि यो भन्दा केही पुराना हस्तलेखित ग्रन्थमा पनि यस्को उल्लेख परेको छ तर पुष्टि भने भएको छैन।

श्री स्वस्थानीको थुप्रै प्रती सन् १९७० को दशकमा भेटिएको थियो। सन् १९७५ देखि २० वर्षसम्म नेपालमा रहेका थुप्रै प्राचीन हस्तलिखित ग्रन्थहरू नेपाल र जर्मन सरकार मिलेर सबैलाई डिजिटलाइजेसन गरिएको थियो। उक्त समूहमा जर्मन सरकारले स्वस्थानीका थुप्रै प्रतिहरु भेटिएको उल्लेख गरिएको थियो। उक्त समयमा जम्मा जम्मी ६२० वटाजति

पन्नाहरु रहेको बताइएको थियो। तर आजसम्म पनि काठमाडौं उपत्यकाका थुप्रै घरहरुमा यस्ता प्रचिन हस्तलेखित ग्रन्थहरु रहेका छ्न। नेपाल जर्मनहरुले पत्ता लगाएका र डिजिटलाइजेसन गरिएको यी ग्रन्थहरु नेपाल अधिराज्री भरीबाट संकलन गरिएको थियो। धेरै काठमाडौं उपत्यका, पाल्पा, गोर्खा, बाराबाट संकलन गरिएको थियो भने सुदुरपश्चिमीबाट भने यस्को प्राचीन प्रती फेला परेको थिएन। तर यो यही उत्पत्ति भएका कारण अझ खोजी गरेमा यस अझ प्राचीन पत्रहरु भेटाउन सकिनेछ अनुमान रहेकी छ।



यस्को उत्पत्ति कसरी भयो भन्दा यसलाइ स्कन्द पुराणको भाग मानिन्छ। यसमा के सम्झनु पर्दछ भने सन् १९७५मा यसको खोजी भयो, त्यस समयमा कुनैपनि शीर्षकमा नभएका तथा मौलिक हस्तलिखित ग्रन्थहरुको केही मात्र व्याक्री पढि स्कन्दपुराण नै हो भनेर टिपाएको थियो। त्यस कारण आजसम्म यो पनि स्कन्दपुराणबाट आएको मानिन्छ। यद्यपि सच्याउनुपर्ने जरुरी देखिन्छ। तर यस्ता ग्रन्थको अध्यन गर्ने लिपि विशेष्ज्ञहरुको कमि भएकाले यस्तो ग्रन्थ बारे थाहा पाउन मुस्किल भएको छ। स्थानीय कथालाई नै लिप्यान्तरण गराएको अनुमान इतिहासविद्हरुको रहेको छ। त्यसैले यस्को उत्पत्ति कहेले भयो भन्ने समय यकिनका साथ भन्न सकिँदैन। यद्यपि सर्वप्राचीन स्वस्थानीको प्रति १६ औं शताब्दीको संस्कृत भाषाबाट लेखिएको छ। त्यसपछिका ग्रन्थ भने संस्कृत र नेवारी दुबै भाषामा भेट्टाएका छन्। र सबैभन्दा पछिल्लो प्रती भने सबै नेवारीमा रहेको छ। उक्त नेवारी पानाहरुमा चित्रहरू पनि कोरीएको छ। यसबाट हामीले अनुमान गर्न सक्छौ कि चित्र र बुट्टा भएका प्रती भने मैलिक होइन। पहिला संस्कृतमा रहेको यस

कथालाई विस्तारै नेवारी भाषा लागिएको हो। यसबाट यसको कालखण्ड पनि निर्धारण गर्न सकिन्छ। नेपाली समाजमा पूर्वमध्य कालसम्म पनि संस्कृत भाषा व्यापकरुपमा बोलिने गरिन्थो। उक्त समयमा नेवारी पनि बोलिने गर्दथ्यो। त्यसैले यस स्वस्थानी कथा पूर्वमध्य कालदेखि नै सुरु भएको अनुमान गर्न सकिन्छ। तर यी पुस्तकहरूमा सबैभन्दा पुरानो स्वस्थानी सातौं शताब्दीको भेटिएको छ भनेर थुप्रै पुस्तकमा उल्लेख गरिएता पनि प्रमाणको अभावमा देखिन्छ।

तर हालसम्म प्राप्त सर्वप्राचीन स्वस्थानी ने॰सं॰ ६९३ “इति श्री लिङ्पुराणे स्वस्थानपरमेश्वर्य्या व्रतकथा समाप्त” लोखिएको छ। यसबाट यो लिंग पुराणबाट प्रभावित भएको देखिन्छ र स्वस्थानीमा रहेको भूगोलको वर्णन पनि यसै पुराणबाट थपिएको हो।

अब नेवार समाजमा मात्र प्रचलित रहेको यो स्वस्थानी परम्परा कसरी देशव्यापीरुपमा फैलियो भनेर खोज्दा, यो चलन मोतीराम भट्टको पालादेखि चलेको अनुमान गरिएको छ। उक्त समयमा उनले भानुभक्तका थुप्रै कृतिहरु प्रकाशन गरे र ब्राह्मण वर्गले मात्र नभइकन अन्य जातका मानिसले पनि धार्मिक ग्रन्थ पढ्ने गर्छ्न र उपलब्ध रहेका छ्न भनी प्रचार गरिएको थियो। यसैबाट प्रवाभित भएर नेवार समाजमा प्रचलित रहेको यस कथालाई पनि चर्चामा ल्यएको थियो। त्यहाँ उपरान्त विभिन्नथरिका स्वस्थानीहरु प्रचारमा आउन थाले। यसै अन्तर्गत यो धर्मिक भएकाले यसका कुरा पुराणसंग जोड्न थालियो। त्यहाँ उपरान्त यसमा पनि विभिन्न पुराण कथाहरु थपिन थाले। यसको व्यापकता भनि २०२० सालदेखि जब बनारसबाट स्वस्थानी किताबहरु प्रकाशनमा आउन थाले तब त्यहाँ प्रकाशन गर्ने ठाउँमा पद्मपुराण, शिवपुराण, लिंग पुराण र स्कन्द पुराणका थुप्रै अंकहरू थपिए र यो चलन हालसम्म पनि चल्दै आइरहेको छ। प्राचीन प्राप्त ग्रन्थहरुमा यी पुराणका केही अंश भएता पनि अहिलेको जस्तो व्यापक उल्लेख रहेको छैन।

अब यहाँ पाइने कथाहरूको बारेमा चर्चा गरौं। नेवा समाजबाट पाइएका थुप्रै यस्ता पाण्डुलिपिहरुमा गोमा, नवराजको मुख्य कथाहरु रहेका छ्न। यद्यपि अठारौं शताब्दीमा

गोरखाबाट प्राप्त भएको अर्को पाण्डुलिपीमा भने नवराज सँगसँगै महादेव पार्वतीको कथा पनि जोडिएको छ। यस्तै १७औं शताब्दीमा पाल्पाबाट प्राप्त भएको कथामा पनि शिव पार्वती, नवराज र लावण्य देशको कथा परेको छ। त्यस्तै केशर पुस्तकालयमा सोह्रौं शताब्दीको स्वस्थानीमा पनि नवराज, गोमा र लावण्य देशको उल्लेख गरिको छ। त्यहाँबाट हामीले के भन्न सक्छौ भने नवराज, गोमा र लावण्य देशको कथा भने स्थानीय कथा रहेको छ। तर यस ग्रन्थका पन्नाहरु एकैठाउँमा नभेटी थुप्रै फरक-फरक ठाउँमा भेटेका कारण यसमा अन्य कथा पनि थप घट हुनसक्ने अनुमान रहेको छ। यस्को व्यपाक बिकास तराईमा पनि देख्न पाइन्छ। अठारौं शताब्दीको एक मैथली पुस्तकमा स्वस्थानी कथाको नाटक रुप पनि लेखिएको छ। यस्तै भारतको बिहारमा पनि केही नाटमा स्वस्थानिको केही अंश फेला परेकोको छ।

हालसम्म प्रप्त केही प्राचीन हस्थलेखित स्वस्थानीको सुचि:

क्रम भाषा ने.सं./वि.सं. शीर्षक पत्र छविचित्र

१. संस्कृत ६९३/१६२९ स्वस्थानपरमेश्वर्या व्रतकथा ८ बी १३/४२

२. नेवारी ७२३/१६५९ स्वस्थानी परमेश्वरीया व्रत ३४ ए ३४४/५

३. मैथिली ८३१/१७६७ स्वस्थानी परमेश्वरीव्रत चरित्र (नाटक) १०७ ई २१४/२

४. नेपाली ९३०/१८६७ स्वस्थान परमेश्वरका धर्मव्रत ५३ एच ३०/३१

५. हिन्दी ९९२/१९२९ स्वस्थानी कौतुक (नाटक) ४२ ई ११६१/७

हाल सम्म प्रप्त प्राचीन पत्रको स्थानहरु

क्रम॰ ने॰सं॰वि॰सं॰ पत्र प्राप्तीस्थान छविचित्र

१. ७२३/१६५९ ३४ राष्ट्रिय अभिलेखालय ए ३४४/५

२. ७८२/१७१९ २० व्यक्तिगत/? ई ५१७/४

३. ८१५/१७५२ १३ व्यक्तिगत/भक्तपुर जी २०४/२३

४. ८२४/१७६१ ३० व्यक्तिगत/काठमाडौं ई १५४५/२७

५. ८३४/१७७१ १९ व्यक्तिगत/काठमाडौं ई १७५०/१८

६. ८७०/१८०७ १४२ व्यक्तिगत/काठमाडौं ई १२८२/३

७. ८८०/१८१७ ७० व्यक्तिगत/पाटन एच २९३/१८

८. ८८२/१८१९ १९ व्यक्तिगत/नाला आइ २७/१७

९. ८८३/१८२० ६८ राष्ट्रिय अभिलेखालय ए १०२१/३

१०. ९०१/१८३८ ४१ राष्ट्रिय अभिलेखालय ए १०३०/११

(स्रोत: medium.com)

अध्ययन गर्न चाहानेको लागि यी ग्रन्थहरु नेपाल राष्ट्रिय अभिलेखालयबाट प्राप्त गर्न सकिन्छ।

**Follow us for daily content:**

**https://www.facebook.com/ourancientne...**

**https://www.instagram.com/ancient_nep...**

**https://www.youtube.com/channel/UCsm9...**

**https://www.ourancientnepal.blogspot.com**

**https://www.reddit.com/user/Ancient_N...**

**https://vm.tiktok.com/ZSuveMFS/**

**References:**


**https://www.aarweb.org/AARMBR/Resources-/Webinars-and-Podcasts-/Jessica-Vantine-Birkenholtz-on-the-Nepalese-Hindu-Goddess-Svasthani.aspx**

**medium.com**

**ऐश्वर्यधर शर्मा, स्वस्थानी, वि.सं. २०४५**

**घटराज भट्टराई, स्वस्थानी व्रतकथाको राष्ट्रिय मूल्य र महिमा, गोरखापत्र, २०४५ माघ २२**

**धनवज्र वज्राचार्य, लिच्छविकालका अभिलेख, २०३०**